# जातीय समानताको प्रवर्द्धनमा
# विद्यमान र योजनाबद्ध उपायहरू

## हङकङ मोनेटरी अथोरिटी

द हङकङ मोनेटरी अथोरिटी (The Hong Kong Monetary Authority) भनेको हङकङको केन्द्रीय बैंकिङ संस्था हो। HKMA को चारवटा मुख्य प्रकार्य छन्:

- लिङ्क गरिएको विनिमय दर प्रणालीको फ्रेमवर्कमा मुद्राको स्थिरता कायम राख्ने;
- बैंकिङ प्रणाली सहित वित्तीय प्रणालीको स्थिरता र अखण्डता बढाउने;
- हङकङको वित्तीय पूर्वाधारको मर्मत-सम्हार र विकास सहित हङकङको स्थिति एक अन्तर्राष्ट्रिय वित्तीय केन्द्रको रूपमा कायम राख्नमा मद्दत गर्ने; र
- विनिमय कोष व्यवस्थित गर्ने।

HKMA ले सबै सर्वसाधारण सदस्यहरूलाई, उनीहरूको जातीय पृष्ठभूमिको परवाह नगरि हाम्रा सेवाहरूमा समान पहुँच बढाउनुको ठूलो महत्व दिन्छ।

## A. HKMA द्वारा उपलब्ध गराइएका विभिन्न प्रकारका सार्वजनिक सेवाहरू र जानकारीको पहुँच

| | |
|---|---|
| सम्बन्धित सेवाहरू | • **HKMA** ले सर्वसाधारणलाई आफ्ना प्रकार्यहरूसँग सम्बन्धित विभिन्न प्रकारका सेवाहरू र जानकारी उपलब्ध गराउँछ। |
| विद्यमान उपायहरू | • सबै जानकारी सम्भव भएसम्म HKMA को आधिकारिक वेबसाइट, सूचना केन्द्र, सामाजिक सञ्जाल प्लेटफर्म, जानकारी हातेपर्चा र पम्प्लेटहरूमा अङ्ग्रेजी र चिनियाँ भाषामा उपलब्ध हुन्छ।<br><br>• HKMA को सोधपूछ र उजुरी प्रबन्धन सेवाहरू दुवै लिखित र मौखिक चिनियाँ तथा अङ्ग्रेजी भाषामा उपलब्ध हुन्छन्। |

- निम्न शीर्षकहरूको सम्बन्धमा आठवटा भाषा (जस्तै, बहासा इन्डोनेसिया, हिन्दी, नेपाली, पंजाबी, टागालग, थाइ, उर्दु र भियतनामी) मा जानकारी उपलब्ध गराउनको लागि HKMA को आधिकारिक वेबसाइटको "स्मार्ट ग्राहकहरू" खण्डमा एक समर्पित वेबपृष्ठ (https://www.hkma.gov.hk/eng/smart-consumers/information-in-other-languages/) विकास गरिएको छ:
  - खाता खोल्ने
  - ग्राहकहरूलाई निष्पक्ष व्यवहार गर्नुहोस् घोषणापत्र
  - स्वचालित टेलर मेशिनहरू (ATM हरू) प्रयोग गर्ने सम्बन्धी सुरक्षा उपायहरू
  - बैंकिङ अभ्यासको आचार-संहिताको सामान्य सिद्धान्तहरू
  - निष्क्रीय खाताहरू बारे बुझ्ने
  - वित्तीय स्वास्थ्य
  - डिपोजिट संरक्षण योजना

| | |
|---|---|
| भावी कार्यको मूल्याङ्कन | • HKMA ले आफ्ना सेवाहरू समय-समयमा समीक्षा गर्छ र आफ्ना कर्मचारी र सार्वजनिक सदस्यहरूका प्रतिक्रिया / सुझावहरूलाई ध्यानमा राख्दै आवश्यक हुँदा सुधारहरू गर्नेछ। |
| प्रयोग गरिएका / प्रयोग गरिनुपर्ने अतिरिक्त उपायहरू | • HKMA ले सार्वजनिक सदस्यहरूका लागि, उनीहरू HKMA को हटलाइनहरू मार्फत सोधपूछ वा उजुरीहरू गर्न चाहन्छन् तर अङ्ग्रेजी वा चिनियाँ भाषामा निपुण छैनन् भने उपयुक्त हुँदा नि:शुल्क टेलिफोन दोभाषे सेवाहरू राखेको छ। दोभाषे सेवाहरूले आठवटा भाषा जस्तै, बहासा इन्डोनेसिया, हिन्दी, नेपाली, पंजाबी, टागालग, थाइ र उर्दु र भियतनामी समेट्छ।<br><br>• HKMA ले भियतनामी भाषा पनि समावेश गर्नको लागि आफ्नो आधिकारिक वेबसाइटको "स्मार्ट ग्राहकहरू" खण्डमा समर्पित वेबपृष्ठ अद्यावधिक गरेको छ। |

## B. कर्मचारीको प्रशिक्षण

| | |
|---|---|
| सम्बन्धित सेवाहरू | • HKMA आफ्नो वैधानिक प्रकार्यहरूको डिस्चार्ज सहज गराउनको लागि कर्मचारीलाई प्रशिक्षण उपलब्ध गराउँछ। |
| विद्यमान उपायहरू | • कर्मचारीको भेदभाव-विरोधी समस्याहरूप्रति सतर्कता र संवेदनशीलता बढाउनको लागि प्रशिक्षण, प्रश्नोत्तरी र इमेल अलर्टहरू नियमित रूपमा व्यवस्थित / परिचालित गरिन्छ। कर्मचारीको सहज सन्दर्भको लागि आन्तरिक भर्चुअल ज्ञान केन्द्रमा सान्दर्भिक निर्देशिका र अध्यादेशहरूलाई पनि केन्द्रीकृत गरिन्छ। |
| भावी कार्यको मूल्याङ्कन | • HKMA ले समय-समयमा आफ्ना प्रशिक्षण कार्यक्रमहरू समीक्षा गर्छ र आफ्ना कर्मचारीका पृष्ठपोषण / सुझावहरूलाई ध्यानमा राख्दै आवश्यक हुँदा सुधारहरू गर्नेछ। |
| प्रयोग गरिएका / प्रयोग गरिनुपर्ने अतिरिक्त उपायहरू | • कर्मचारीको लागि प्रशिक्षण समान अवसर आयोग र अन्य सान्दर्भिक संस्थाहरूसँगको सहकार्यमा नियमित आधारमा गरिन्छ। |

जातीय समानताको प्रावधानमा हाम्रा उपायहरूसँग सम्बन्धित सोधपूछहरूका लागि, कृपया Mr Angus Chow, व्यवस्थापक (कर्पोरेट डेभलपमेन्ट) लाई निम्न च्यानलहरू मार्फत सम्पर्क गर्नुहोस् -

| | | |
|---|---|---|
| टेलिफोन नं. | : | 2597 0666 |
| फ्याक्स नम्बर: | : | 2509 9192 |
| इमेल | : | publicenquiry@hkma.gov.hk |
| हुलाक ठेगाना | : | 55औं तल्ला, टु इन्टरनेशनल फाइनान्स सेन्टर, 8 फाइनान्स स्ट्रिट, सेन्ट्रल, हङकङ |

**हङकङ मोनेटरी अथोरिटी**
**जुन 2021**